# नेपालको राष्ट्रिय गान

सयौं थुँगा फूलका हामी, एउटै माला नेपाली
सार्वभौम भई फैलिएका, मेची-महाकाली ।

प्रकृतिका कोटीकोटी सम्पदाको आँचल
वीरहरूका रगतले, स्वतन्त्र र अटल

ज्ञानभूमि, शान्तिभूमि तराई, पहाड, हिमाल
अखण्ड यो प्यारो हाम्रो मातृभूमि नेपाल

बहुल जाति, भाषा, धर्म, संस्कृति छन विशाल
अग्रगामी राष्ट्र हाम्रो, जय जय नेपाल ।

राष्ट्रपति

राष्ट्रपति भवन
महाराजगञ्ज, काठमाडौं, नेपाल ।

## शुभकामना

१६ औं गणतन्त्र दिवसको अवसरमा नेपाल सरकारको निर्णय तथा सञ्चार तथा सूचना प्रविधि मन्त्रालयको संयोजनमा 'गणतन्त्रका १५ वर्ष' शीर्षकमा पुस्तिका प्रकाशन हुन लागेकोमा खुशी लागेको छ । यो पुस्तिका प्रकाशनबाट संघीय लोकतान्त्रिक गणतन्त्र नेपालको अवस्था आम नागरिकलाई बुझाउन सहज हुनेछ भन्ने विश्वास लिएको छु । गणतन्त्र स्थापना हुनुभन्दा अघिको नेपाल र गणतन्त्र स्थापनापछि नेपाली समाजमा भएको रूपान्तरणको विश्लेषण पुस्तकमा उल्लेख गर्नु आवश्यक छ । गणतन्त्र कार्यान्वयनका पक्षमा देखिएका कमीकमजोरीको सुधार गर्दै संघीय लोकतान्त्रिक गणतन्त्रको सुदृढीकरणका लागि सहयोग पुग्ने विश्वास लिएको छु ।

नेपाली जनताको ७० वर्षको सङ्घर्षको परिणामस्वरूप आज बहुलवादमा आधारित संघीय लोकतान्त्रिक गणतन्त्र सम्भव भएको हो । लोकतान्त्रिक गणतन्त्र नै अहिलेसम्म विश्वमा प्रचलनमा रहेकामध्ये उत्कृष्ट व्यवस्था हो । हामीले लोकतान्त्रिक गणतन्त्र मात्र होइन मुलुकलाई संघीय स्वरुपमा बदलेर नेपाली विशेषताको व्यवस्था स्थापना गरेका छौं । यसले सबै जाति, लिंग, धर्म, भाषा र संस्कृतिका समुदायको अधिकार र राज्यप्रतिको उनीहरूको अपनत्व स्थापित हुँदै गएको छ ।

हामीले गणतन्त्र स्थापनापछि सो अनुरूपको संविधान जारी गरी दुईपटक संघ, प्रदेश र स्थानीय तहको निर्वाचन गराइसकेका छौं । गणतन्त्र स्थापनाको यो समयमा नेपाली जनताको शीघ्र परिवर्तनको चाहना र आवश्यकतालाई मध्यनजर गरी हामीले परिवर्तनको आभास दिने गरी जनताको जीवनस्तरमा सुधार ल्याएर उनीहरूलाई यही व्यवस्थामा मात्र आफ्नो भविष्य सुरक्षित हुन्छ भन्ने भरोसा जागृत गराउन अनिवार्य छ । यसका लागि यो पुस्तिका सन्दर्भ सामग्रीका रुपमा सहयोगी हुन सकोस्, हार्दिक शुभकामना ।

अन्त्यमा १६ औं गणतन्त्र दिवसको अवसरमा स्वदेश तथा विदेशमा रहनुभएका सम्पूर्ण नेपाली दिदीबहिनी, दाजुभाइमा हार्दिक बधाईसहित शुभकामना व्यक्त गर्दछु । संघीय लोकतान्त्रिक गणतन्त्र स्थापनाका लागि आफ्नो अमूल्य जीवन बलिदान गर्नुहुने अमर सहिदहरूप्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दै गणतान्त्रिक आन्दोलनमा योगदान गर्ने सबैमा उच्च सम्मान व्यक्त गर्दछु ।

रामचन्द्र पौडेल

मिति-२०८०/०२/१५

प्रधानमन्त्री

काठमाडौं, नेपाल

## शुभकामना

गणतन्त्र दिवस, २०८० को अवसरमा स्वदेश तथा विदेशमा रहनुभएका सम्पूर्ण नेपाली आमाबुवा, दिदीबहिनी, दाजुभाइमा हार्दिक बधाईसहित शुभकामना व्यक्त गर्दछु । महान जनयुद्ध, ऐतिहासिक जनआन्दोलनसहित संघीय लोकतान्त्रिक गणतन्त्र स्थापनाका लागि भएका तमाम आन्दोलनमा आफ्नो अमूल्य जीवन बलिदान गर्नुहुने ज्ञात अज्ञात सहिदहरुप्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दछु। बेपत्ता तथा घाइते अपाङ्ग योद्धाहरुसहित गणतान्त्रिक आन्दोलनमा योगदान गर्ने राजनीतिक नेता, कार्यकर्ता, नागरिक समाज एवं आम जनसमुदायप्रति उच्च सम्मान व्यक्त गर्दछु ।

जनताको सङ्घर्ष र वीरतापूर्ण बलिदानबाट हामीले समावेशी संघीय लोकतान्त्रिक गणतन्त्र स्थापना गरेको पन्ध्र वर्ष पूरा भएको छ। यसबीचमा हामीले संविधानसभाबाट संविधान जारी गरी गणतन्त्रलाई संस्थागत गर्ने सवालमा दुईपटक सबै तहको निर्वाचन सफल पारेका छौं र जननिर्वाचित प्रतिनिधिबाट शासन सञ्चालन गर्ने सर्वोत्तम लोकतान्त्रिक अभ्यासलाई बलियो बनाउँदै लगेका छौं । संविधान र गणतन्त्र सर्वस्वीकार्य बन्दै जानु, मौलिक हकको कार्यान्वयनमार्फत् जनताले पाउने आधारभूत सेवाहरु सहज बन्दै जानु, सयौं वर्षदेखि उत्पीडनमा पारिएका वर्ग, जाति, भाषा, धर्म, क्षेत्र, लिङ्ग र संस्कृतिका समुदायको अधिकार स्थापित हुँदै नेपाल राज्यप्रतिको उनीहरुको अपनत्व बलियो बन्दै जानु गणतान्त्रिक व्यवस्था संस्थागत हुँदै गएको देखिने बलिया आधारहरु हुन् ।

हामीले नेपालमा संघीय लोकतान्त्रिक गणतन्त्रलाई लोकतन्त्रको अभ्यास गर्ने उत्कृष्ट व्यवस्थाका रुपमा स्थापित गर्न पहल गरिरहेका छौं । नेपाली समाजको संरचना तथा भौगोलिक विशिष्टतालाई सम्बोधन गर्न समावेशी तथा समानुपातिक प्रतिनिधित्वको सिद्धान्त र नेपाल राज्यलाई संघीय लोकतान्त्रिक गणतन्त्रको रुपमा स्थापित गरेका छौं । विश्वव्यापीरुपमा स्थापित लोकतन्त्रका आधारभूत सिद्धान्त र नेपाली समाजको विशेषता अनुकूलका चरित्र थप गरिएको संघीय लोकतान्त्रिक गणतन्त्र नेपालको मौलिक राजनीतिक प्रणाली हो भन्ने तथ्य स्थापित हुँदै गएको छ। यसलाई अझै जनताको जीवन व्यवहारसँगै जोडेर स्थापित गर्दै लैजानुपर्ने आवश्यकता छ ।

नेपाली जनताको आर्थिक, सामाजिक र सांस्कृतिक रूपान्तरण यो व्यवस्थाको अभिष्ट हो । संविधान र व्यवस्थाअनुरुप सञ्चालित सरकारलगायत सबै पक्षको ध्यान अब गणतान्त्रिक व्यवस्थाका अभिष्ट पूरा गर्नेतिर केन्द्रित हुनुपर्छ र हुँदै पनि गएका छन् । गणतन्त्रका पन्ध्र वर्षमा हामी कहाँ पुग्यौं र अबको मार्गचित्र के हो ? गणतन्त्र अघि र पछि भएका प्रगतिका सूचकको तुलनात्मक अध्ययन र विश्लेषण गरी गणतान्त्रिक व्यवस्थाले ल्याएका रुपान्तरणका सूचकहरुलाई संस्थागत गर्ने दायित्व एकातिर छ भने अर्कातिर यसबीचमा देखिएका चुनौतीको सामना गर्ने उपायको खोजी गर्दै आगामी मार्गचित्र अझ सुस्पष्ट गर्नुपर्ने समय आएको छ । यसका लागि 'गणतन्त्रका पन्ध्र वर्ष' पुस्तिका उपयुक्त सन्दर्भ सामग्री हुनेछ भन्ने विश्वास लिएको छु ।

अन्त्यमा, छोटो समयमै आवश्यक सामग्री सङ्कलन गरी महत्वपूर्ण प्रकाशनको संयोजन गर्ने सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, विषयगत सामग्री उपलब्ध गराउने सबै मन्त्रालय र निकाय तथा सम्पादन मण्डललाई धन्यवाद दिन चाहन्छु ।

१५ जेठ २०८०

पुष्पकमल दाहाल "प्रचण्ड"

मन्तव्यः

# गणतन्त्रः वास्तविक आधुनिक युगको थालनी



-रेखा शर्मा
मन्त्री, सञ्चार तथा सूचना प्रविधि

गणतन्त्र दिवस, २०८० को अवसरमा सम्पूर्ण नेपाली आमाबुवा, दिदीबहिनी, दाजुभाइहरुमा हार्दिक बधाईसहित शुभकामना व्यक्त गर्दछु । महान् जनयुद्ध, ऐतिहासिक जनआन्दोलनसहित संघीय लोकतान्त्रिक गणतन्त्र नेपाल स्थापनाका लागि भएका तमाम् आन्दोलनमा आफ्नो अमूल्य जीवन बलिदान गर्नुहुने ज्ञात अज्ञात सहिदहरुप्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दछु। बेपत्ता तथा घाइते अपाङ्ग यौद्धाहरु सहित गणतान्त्रिक आन्दोलनमा योगदान गर्ने राजनीतिक नेता कार्यकर्ता, नागरिक समाज एवं आम जनसमुदायप्रति उच्च सम्मान व्यक्त गर्दछु ।

नेपालमा २४० वर्षे राजतन्त्रको अन्त्य गरी संघीय लोकतान्त्रिक गणतन्त्र स्थापना गरेको पन्ध्र वर्ष पूरा भएको छ । पन्ध्र वर्षअघि विसं २०६५ जेठ १५ गते संविधानसभाको पहिलो बैठकबाट राजतन्त्रको अन्त्य गरी गणतन्त्र घोषणा गरिएको थियो । त्यही दिनदेखि नेपाल अधिराज्य नेपाल राज्यमा परिणत भएको थियो भने नेपाली जनता नागरिकको हैसियतमा पुगेका थिए ।

राजाको जेठो छोरा राजा बन्ने वंशीय पुरुषतन्त्रको अन्त्य गरी वंशका आधारमा होइन, जनताले चुनेका प्रतिनिधिबाट निर्वाचित राष्ट्रप्रमुख बन्ने जनताको राज्य व्यवस्थाको रुपमा गणतन्त्र स्थापना भएको हो । नेपालमा गणतन्त्र स्थापनाको बहस विसं २००६ सालमा नेपाल कम्युनिस्ट पार्टी स्थापनासंगै सुरु भएको थियो भने २०५२ सालदेखि सञ्चालित जनयुद्धले गणतन्त्र प्राप्तिको आन्दोलनमा मुख्य भूमिका खेलेको हो । गणतन्त्रको व्यावहारिक अभ्यास हामीले २०६५ सालपछि सुरु गरेका हौं । सामान्यतः गणतन्त्रलाई शासन व्यवस्थाको उत्कृष्ट रुप मानिएको छ । समाज विकासका हिसाबले पूँजीवाद सामान्तवादभन्दा प्रगतिशील व्यवस्था भएकाले यसको राजनीतिक अभिव्यक्ति राजतन्त्रको अन्त्य गरी गणतन्त्र स्थापना गर्नु नै हो । समाज विकासका हिसाबले नेपाली समाज सामान्तवादबाट पूँजीवादमा प्रवेश गरेसँगै राजनीतिक रुपमा पनि राजतन्त्रको अन्त्य गरी गणतन्त्र स्थापना अवश्यंभावी थियो तर उल्लेख्य राजनीतिक धक्काविना यो संभव थिएन ।

नेपालमा दश वर्षसम्म चलेको जनयुद्धले सामाजिकरुपमा सामान्तवादका आधार ध्वस्त बनाउँदै लग्यो । जमिन्दारहरुले किसानमाथि अत्याचार गरिरहेका थिए, कथित तल्लो जातका मानिस कथित माथिल्लो जातका मानिसको शोषणको जाँतोमा पिसिएका थिए । महिलाहरुलाई बच्चा जन्माउने मेशिनको रुपमा मात्र प्रयोग गरिएन, दोस्रो दर्जाको नागरिकको व्यवहार गरिन्थ्यो । क्षेत्रीय हिसाबले सहर र गाउँको बिचमा ठूलो खाडल थियो । एक वर्ग, एक जाति, एक भाषा, एक धर्म, एक संस्कृति र पितृसत्तात्मक चिन्तनको सहारामा मौलाइरहेको सामन्तवादको जरा काट्नका लागि उत्पीडित वर्ग, जाति, भाषा, धर्म, संस्कृति र लिङ्गको मुक्तिको आह्वानसहित सञ्चालित दश वर्षे जनयुद्धले नेपालमा सामाजिकरुपमा सामन्तवादलाई कमजोर बनायो । अन्तत नेपालमा गणतन्त्र स्थापना भयो। राजनीतिक इतिहास र समाज विकास दुबै हिसाबले नेपालमा गणतन्त्र

संघीय लोकतान्त्रिक गणतन्त्रको स्थापनापछि नेपालमा के भयो ? गणतन्त्रका पन्ध्र वर्षको समीक्षा गरिरहँदा हामीले यो प्रश्नमा सार्थक वहस गर्नैपर्छ । छोटोरुपमा सबैले बुझ्ने अर्थमा भन्न सकिन्छ- गणतन्त्रले हरेक नेपालीलाई सार्वभौमसत्ता सम्पन्न नागरिकको हैसियत प्रदान गर्यो । आजभन्दा वीस वर्ष अगाडि मात्रै हेर्ने हो भने नेपालमा महिला पनि राष्ट्र प्रमुख बन्नसक्छन् भन्ने कल्पना गर्ने विषय थिएन । हामीले राजनीतिक र महिला आन्दोलनलाई संगठित गर्ने बेलामा विभिन्न देशका महिलाहरुका सफलताका कथा सुनाउँथ्यौं । ती देशका महत्वपूर्ण पदमा महिला पुगेको सन्दर्भ उल्लेख गर्दै हामीले भन्थ्यौं- नेपालमा पनि कुनै दिन महिलाहरु राज्यको नेतृत्व गर्ने तहमा पुग्ने छन्, त्यसैका लागि हामीले संघर्ष गरिरहेका छौं । हामीले गणतन्त्र स्थापना गरेको छोटो अवधिमा राष्ट्रपति, सभामुख, प्रधानन्यायाधीशजस्ता महत्वपूर्ण पदमा महिलाको नेतृत्व स्थापित गर्न सक्यौं, यो गणतन्त्रको उपलब्धि हो । गणतन्त्र नभइदिएको भए महिला राष्ट्रप्रमुख बन्ने व्यवहारिक मात्र होइन, सैद्धान्तिकरुपमा नै संभव थिएन किनकि राजाको जेठो छोरा राजा बन्ने व्यवस्थामा छोरीको स्थान कहिल्यै प्राप्त हुँदैन्थ्यो ।

महिला मात्र होइन, दलित, जनजाति, मधेशी, मुस्लिमलगायत पछाडि पारिएका सबै समुदायलाई राज्यको मूलधारमा मात्र होइन, नेतृत्वदायी भूमिकामा ल्याउने काम गणतन्त्रले गरेको छ । यसका लागि समावेशी समानुपातिक प्रतिनिधित्वको सिद्धान्त स्थापित गरिएको छ । यसले विस्तारै सबै समुदायमा नेपाल राज्यप्रतिको साझा स्वामित्व र अपनत्व स्थापित गर्दै लगेको छ । सबैको राज्यप्रतिको अपनत्व स्थापित हुनु भनेको राष्ट्रिय हितको प्रवर्धन हुनु हो, मुलुकको स्वाधीनता र सार्वभौमिकता बलियो बन्दै जानु हो । त्यसैले गणतन्त्र स्थापनापछि पछाडि पारिएका समुदायले अधिकार पाए भन्ने मात्रै होइन, नेपाली बिचको साझा भावना निर्माण हुँदै जाँदा राष्ट्रियता स्वाधीनता र सार्वभौमिकता पनि बलियो हुँदै गएको छ ।

खासगरी हामीले राजनीतिक आन्दोलनमा राष्ट्रियता, जनतन्त्र र जनजीविकाका सवाललाई प्रमुख एजेण्डाको रुपमा उठाउने गरेका छौं । गणतन्त्र स्थापनासँगै जनतन्त्र (लोकतन्त्र) सुनिश्चित हुँदै गएको छ । लोकतन्त्र भनेको राज्यका सबै नागरिकले समान अधिकार प्रयोग गर्न पाउनु हो । त्यस्तै राष्ट्रियता पनि बलियो बन्दै गएको छ । राष्ट्रियता भनेको भूगोल र जनताको भावनाको एकीकृत रुप हो । जनता अधिकार सम्पन्न हुँदा भूमि सुरक्षित हुन्छ, भूमि बचाउने जनताले नै हो ।

हामीले गणतन्त्रका पन्ध्र वर्षको समीक्षा गरिरहँदा जनतन्त्र र राष्ट्रियताको सवालमा जस्तै जनजीविकाको क्षेत्रमा जनताले गरेका अपेक्षा पूरा भएका छैनन् । यो हामीले स्वीकार गर्नुपर्ने चुनौती हो । जनताले गरेको अपेक्षाको तुलनामा सेवा प्रवाहलगायतका जनजीविकाका सवालमा सम्बोधन नहुनु एवम् शासन सञ्चालनको जिम्मेवारीमा बसेकाहरुले बेलाबेलामा कमजोरी दोहोर्याउँदै जानुले जनतामा असन्तुष्टि बढ्दै गएको यथार्थ हामीले स्वीकार गर्नैपर्छ । म यहाँनेर जोड दिएर के भन्न चाहन्छु भने शासन सञ्चालनको जिम्मेवारीमा बसेकाहरुले गर्ने कमजोरीलाई व्यवस्थाकै कमजोरीको रुपमा लिएर गणतन्त्रमाथि प्रहार गर्न खोजिएको छ । यो विल्कुल गलत तथ्य हो कि जिम्मेवारीमा बसेका कुनै पात्रले गर्ने कमजोरीको दोष प्रणाली (गणतन्त्र)को हुँदै होइन ।

हिजोसम्म नागरिकको हैसियतबाट विमुख गरिएकाहरुलाई गणतन्त्रले अधिकार सम्पन्न मात्र गराएन, नेतृत्वमा समेत पुर्यायो। अब त्यहाँ पुगेका कसैले गल्ती गर्छन् भने त्यो व्यक्तिको कमजोरी हो, व्यवस्थाको दोष होइन । त्यस्तो गल्ती गर्नेहरु ढिलो चाँडो सजायको भागीदार हुन्छन् किनकि हिजो राजतन्त्रकालमा जस्तो अहिलेको गणतन्त्रमा वंश, नाता वा कुनै पनि वहानामा गल्ती गर्ने छूट पाउँदैनन् । गणतन्त्रमा व्यक्तिको होइन, विधिको सर्वोच्चता प्रमुख हुन्छ । राजनीतिकरुपमा आधुनिक र सामाजिक रुपमा प्रगतिशील गणतान्त्रिक व्यवस्थामा सबै समस्याको समाधान संभव हुन्छ । त्यसैले गणतन्त्रको विकल्प अझ उन्नत गणतन्त्र नै हो ।

हामीले यहाँनेर दुई वटा कामलाई एकै साथ अघि बढाउनुपर्ने दायित्व थपिएको छ । एकातिर गणतान्त्रिक व्यवस्थाको सैद्धान्तिक महत्वलाई स्थापित गर्न नयाँ पुस्तामा हिजो र आजको नेपाली समाजको अवस्था अनि यो अभूतपूर्व परिवर्तनका लागि भएको वीरता र बलिदानका गाथाहरु हस्तान्तरण गर्दै लैजानुपर्छ भने अर्कोतिर सेवा प्रवाहलाई केन्द्रमा राखेर सबै तहका सरकार र सरकारी निकायहरु युद्धस्तरमा परिचालित हुनुपर्छ । त्यसैले वर्तमान सरकारले अघि सारेको 'सुशासन, समृद्धि र सामाजिक न्याय'को कार्यदिशामार्फत गणतन्त्रलाई संस्थागत गर्न सकिने छ भने संविधानले परिकल्पना गरेको समाजवादउन्मुख अर्थ व्यवस्थाको दायित्व पनि यही बाटोबाट पूरा गर्न सकिन्छ ।

वर्तमान सरकारले पहिलो मन्त्रिपरिषद् बैठकबाटै सुरु गरेको सुशासन र सहज सेवा प्रवाहको अभियानबाट विस्तारै नतिजा प्राप्त हुन थालेको छ । भ्रष्टाचारविरुद्धका अनुसन्धानमा सरकारले आफ्नो दृढता प्रस्तुत गरिरहेको छ भने विभिन्न सेवा प्रवाहका क्षेत्रलाई जनतामैत्री बनाउँदै लगेको छ । सडक, सदन र सञ्चारमाध्यममार्फत सार्वजनिक हुने कुनै पनि समस्या तत्काल सम्वोधन गर्ने गरी सरकार अघि बढिरहेको छ । तमाम् बेथितिको अन्त्य गर्दै थालिने यसप्रकारका अभियानबाट राज्यप्रतिको जनताको विश्वास वृद्धि हुँदै नयाँ आशाको सञ्चार हुन्छ । यही नै गणतन्त्र संस्थागत गर्ने उपयुक्त विधि हो भन्ने  सरकारको बुझाई रहेको छ ।

पन्ध्र वर्ष भनेको एउटा महत्वपूर्ण अवधि हो, त्यसैले गणतन्त्रका पन्ध्र वर्षको समीक्षासहित यो वर्षको दिवस मनाऔं भन्ने सोंचका साथ हामीले नयाँपन दिन खोजेका हौं । हामीले बहस र छलफल गर्ने तथ्यमा नै हो, तथ्यविनाको काल्पनिक बहस अर्थपूर्ण हुँदैन । त्यसैले २०६५ सालदेखि २०७९ सालसम्म कुन कुन क्षेत्रमा के परिवर्तन आयो ? यही प्रश्नलाई आधार मानेर हामीले संक्षिप्तरुपमा भए पनि महत्वपूर्ण खोज गरेका छौं । यो खोज गरेर 'गणतन्त्रका पन्ध्र वर्ष' पुस्तिका प्रकाशनको निर्णय र निर्देशनसहित सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई संयोजनको जिम्मेवारी दिनुहुने सम्माननीय प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड'सहित गणतन्त्र दिवस २०८० मूल समारोह समितिप्रति हार्दिक आभार व्यक्त गर्न चाहन्छु । छोटो अवधिको बिचमा पुस्तिका प्रकाशनको संयोजन, आवश्यक सामग्रीको संकलन र सम्पादन गर्ने सञ्चार तथा सूचना प्रविधि मन्त्रालयसहित समयमै आवश्यक तथ्यांक उपलब्ध गराउने सबै मन्त्रालयका जिम्मेवार पदाधिकारीहरुलाई हार्दिक धन्यवाद ज्ञापन गर्न चाहन्छु ।

# विषय सूची

# गणतन्त्रका १५ वर्ष

नेपालमा गणतन्त्र स्थापना भएको १५ वर्ष पूरा भएको छ । जनयुद्ध र जनआन्दोलनको जगमा भएको निर्वाचनबाट गठित संविधानसभाको पहिलो बैठकले २०६५ जेठ १५ गते दुई सय ४० वर्ष लामो शाहवंशीय राज परम्पराको अन्त्य गर्दै नेपालमा सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको घोषणा भएको थियो । जनताद्वारा निर्वाचित प्रतिनिधिबाट संविधान बनाइनु र वंश परम्परामा आधारित शासन व्यवस्थालाई जनतामा निहित सार्वभौम सत्ताको प्रयोगमार्फत जनताका छोराछोरी नै राष्ट्र प्रमुख हुने हैसियत बनाउनु गणतन्त्रको मूलभूत विशेषता रहेको छ ।

शान्तिपूर्ण र सशस्त्र आन्दोलनको सफलतामार्फत् नै मुलकमा गणतन्त्र, सङ्घीयता, धर्मनिरपेक्षता, सामाजिक न्यायसहितको समानुपातिक समावेशी शासन व्यवस्थाजस्ता अग्रगामी राजनीतिक परिवर्तनहरु सम्भव हुन सकेको हो । मुलुकमा लोकतन्त्र स्थापित भएसँगै जारी भएको अन्तरिम संविधानले विस्तृत शान्ति सम्झौताका विषयहरुका साथै समानुपातिक प्रतिनिधित्वको विषय समेटेको थियो । संविधानसभाको निर्वाचन गर्ने र निर्वाचित प्रतिनिधिहरुबाट जनचाहना बमोजिम संविधान जारी गर्ने प्रमुख जनादेश रहेको अन्तरिम संविधानको मर्मअनुसार सार्वजनिक सेवाहरुमा आरक्षणको व्यवस्था गरियो । उक्त प्रावधानकै कारण प्रशासनमा नेपाली समाजको विविधतायुक्त चित्र देखिन थालेको हो । त्यसैगरी राजनीतिक प्रतिनिधित्वमा न्यूनतम् ३३ प्रतिशत महिला प्रतिनिधित्व हुनुपर्ने संवैधानिक र कानूनी व्यवस्थाका कारण सङ्घ, प्रदेश र स्थानीय तहमा महिलाको उपस्थिति बढ्दै गएको छ ।

नेपालमा बलिदानीपूर्ण लामो सङ्घर्षपछि नेपाली जनताले आफ्ना प्रतिनिधिमार्फत् संविधान निर्माण गर्न सफल भएका छन् । नेपाललाई सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक मुलुक घोषणा गर्दै नेपालको संविधानले गरेको व्यवस्थाअनुसार तीनवटै तहको निर्वाचन दोस्रो पटक सम्पन्न भई समानुपातिक प्रणालीसहितको प्रतिनिधित्व र विविधतासहितको नेतृत्व विकास एवम् विभिन्न तहका जनताबीच विकास र समाज सेवाको अवसर उपलब्ध हुन सकेको हो । यति मात्र होइन, जनताको नजिक सेवा प्रदायक निकायहरु पुगेका छन् । शिक्षा, स्वास्थ्य तथा पूर्वाधार विकासका लागि स्रोत परिचालन मात्र हैन विधि बनाउने, कार्यान्वयन गर्ने र जनशक्ति परिचालन गर्ने अधिकारसमेत विकेन्द्रित भएको छ । संविधानमा पहिलोपटक राष्ट्रिय हित र नागरिकले पूरा गर्नुपर्ने दायित्वहरु मात्र उल्लेख छैनन् कि अधिकारमुखी दृष्टिकोणबाट मौलिक हकको प्रावधान समाविष्ट गरिएका छन् । मौलिक हक कार्यान्वयनका लागि आवश्यक कानून बनेका छन् र कतिपय कानुन संशोधन भएका छन् ।

नेपालको संविधानले प्रत्यक्ष र प्रतिनिधिमूलक लोकतन्त्रको सम्मिश्रण सहित प्रत्यक्ष तथा समानुपातिक निर्वाचन प्रणाली अवलम्बन गर्ने सारवान लोकतन्त्रको व्यवस्था गरेको छ । यस्तो खालको समावेशी लोकतन्त्र सार्क राष्ट्रहरुमा त उत्कृष्ट मानिएको छ, नेपाली लोकतन्त्रमा भएका अभ्यास  विश्वमै नमुनाका रुपमा रहन गएका छन् । समानुपातिक प्रणालीका राम्रा पक्षहरु समेट्ने मिश्रित निर्वाचन प्रणाली नेपालले अङ्गीकार गरेको छ । हाम्रो संविधानको यही विशेषताको मूल्याङ्कन गर्दै अन्तरव्यवस्थापिका सङ्घले सन् २०२० मा पुरस्कृत समेत गर्नु भनेको समस्त नेपालीका लागि गौरवको विषय हो ।

सामाजिक परिसूचकमा उत्साहजनक सुधार देखिएको छ। विसं २०६४ मा नेपालभर रहेका जिल्ला अस्पताल वा सो भन्दा ठूला अस्पतालको सङ्ख्या जम्मा एक सय दुई रहेकामा २०७९ मा यो सङ्ख्या दुई सय एक पुगेको छ। स्वास्थ्य सेवाका मुख्य आधारका रुपमा रहेका चिकित्सकको सङ्ख्या सोही अवधिमा एक हजार छ सय २७ बाट १८ गुणाले बढेर ३० हजार एक सय ३३ पुगेको छ। त्यस्तै, यस अवधिमा नेपालीको सरदर आयु ६४ वर्षबाट ७२ वर्ष पुगेको, बाल मृत्युदर प्रतिहजारमा ४८ बाट २८ मा झरेको, पाँच वर्षमुनिका शिशु मृत्युदर प्रतिहजारमा ६१ बाट ३३ मा झरेको छ। अस्पताल वा स्वास्थ्य संस्थामा गई बच्चा जन्माउने प्रतिशत १८ बाट ७९ पुगेको छ। शिक्षातर्फका साक्षरता दर वि.सं.२०६४ सालमा ६१ प्रतिशत रहेकोमा २०७९ मा ७६ प्रतिशत पुगेको छ भने प्राथमिक, आधारभूत र माध्यमिक गरी तीनवटै तहका विद्यालयको सङ्ख्या बढेको छ। प्राथमिक तहमा भर्ना दर ९५ प्रतिशतबाट बढेर अहिले ९७ प्रतिशत पुगेको छ। सार्वजनिक विद्यालयको शैक्षिक गुणस्तर अभिवृद्धिको लागि पूर्वाधार विकास गर्न र प्राविधिक तथा व्यवसायिक शिक्षामा पहुँच अभिवृद्धि गर्न राष्ट्रपति शैक्षिक सुधार कार्यक्रम सञ्चालनमा रहेको छ। युवाको क्षमता विकास गरी राष्ट्र निर्माणमा सहभागिता अभिवृद्धि गर्ने र खेलकुदको माध्यमबाट नागरिकको स्वास्थ्य प्रवर्द्धन गर्दै राष्ट्रिय गौरव बढाउने उद्धेश्यका लागि युवा तथा साना व्यवसायी रोजगार कोष, राष्ट्रिय युवा परिषद र राष्ट्रिय खेलकुद परिषद क्रियाशिल रहेका छन्।

देशको आर्थिक विकास र वित्तीय व्यवस्थापनको क्षेत्रमा पनि सुधारका उल्लेख्य प्रयासहरु भएका छन्। नेपाल सरकारले विकास निर्माणको कार्यलाई नयाँ सोचका साथ तीव्र रुपमा अघि बढाउन राष्ट्रिय गौरवका आयोजनाहरू पहिचान गरी कार्यान्वयनमा ल्याएको छ। सडक, पुल, भवनहरु, जलविद्युत् योजना, विमानस्थल, सिँचाइ नहर, केवुलकार, सुरुङ्गमार्गको निर्माण पनि अघि बढेका छन्। विसं २०६४ मा रु ३१ हजार नौ सय ४६ रहेको प्रतिव्यक्ति आय २०७९ मा रु एक लाख ८२ हजार छ सय ८३ पुगेको छ। गरिबी निवारणलाई मापन गर्ने बहुआयामिक गरिबी दरले सन् २०१४ मा २८.६ प्रतिशत जनसंख्या गरिब देखाएकोमा हाल यो प्रतिशत १७.४ मा झरेको छ। त्यस्तै मानव विकास सूचकाङ्कमा नेपालको सूचकाङ्क सन् २०१० मा ०.५४३ रहेको अवस्थामा सुधार भई हाल ०.६०२ पुगेको छ। त्यस्तै लैंगिक असमानता सूचकांक २०६४ सालमा ०.५३२ रहेकामा २०७९ सालमा यो अङ्क घटेर ०.४५२ मा ओर्लेको छ। लगानी वातावरणको सङ्केत गर्ने सूचकका रुपमा लिइने डुइङ विजनेस प्रतिवेदन २०२० ले नेपालको स्थान अघिल्लोपटकको ११० औं बाट सुधार भई ९४ मा ओर्लेको देखाएको छ। यो बाहेक भ्रष्टाचार नियन्त्रण र पारदर्शीतासम्बन्धी सूचकाङ्क एवम् विश्व नवप्रवर्तन सूचकाङ्कका पछिल्ला संस्करणहरुले नेपालको स्थान सुदृढ हुँदै गएको देखाएका छन्।

वि.सं. २०६४ सालमा पाँच हजार चार सय किलोमिटर रहेको पक्की सडक २०७८ सालमा १६ हजार ६ सय किमी पुगेको छ भने पक्की, कच्ची र ग्राभेल गरी सडकको लम्बाई ३३ हजार ७ सय किलोमिटर पुगेको छ। विद्युत् पहुँच पुगेका घरपरिवार २०६४ सालमा ५६ प्रतिशत रहेकोमा २०७८ सालमा ९२ प्रतिशत पुगेको छ। त्यस्तै शौचालयको प्रयोग गर्ने घरपरिवारको प्रतिशत ४९ प्रतिशतबाट दोब्बरले बढेर ९६ प्रतिशत पुगेको छ। यसैगरी मोबाइल सेवा प्रयोगकर्ता ५.९५ प्रतिशतबाट बढेर २०७९ मा १२२.२५ प्रतिशत पुगेको एवम् इन्टरनेट सेवा ०.२४ प्रतिशतबाट १३३ प्रतिशत पुगेको छ।

वि.सं.२०७२ को महाभूकम्पपछिको प्रतिकार्य, पुनर्निर्माण र पुनस्थापनाको सवाल होस् वा कोभिड-१९ महामारी व्यवस्थापनको विषय नै किन नहोस् सिङ्गो देश र प्रदेश तथा स्थानीय तहहरुले पनि आ-आफ्नो क्षेत्रमा समन्वय र सहकार्य गरी व्यवस्थापन भएको थियो। स्थानीय आर्थिक विकास र सेवा प्रवाहमा सुधारका लागि धेरै स्थानीय तहहरु सिकाइकै चरणमा अब्बल प्रमाणित भएका छन्। खराबीलाई झाँगिन नदिने र स्थानीय सम्भावनाहरुको बढीभन्दा बढी प्रयोग गर्दै वातावरणमैत्री विकासका क्रियाकलाप अगाडि बढाउने स्थानीय तहहरुले महत्वपूर्ण योगदान गरिरहेका छन्।

गणतान्त्रिक शासन विश्वमा उत्कृष्ट मानिएको शासन प्रणली हो । यसको उत्कृष्टतालाई व्यवहारमा रुपान्तरण गर्दै सबै नागरिकमा सार्वभौमसत्ता सम्पन्न भएको अनुभूति दिलाउनुपर्ने भएको छ । यसका लागि सेवा प्रवाहमा चुस्तता, विकास निमार्णमा गुणस्तरीयता र दिगोपना सुनिश्चितताका साथ संस्थागत सवलीकरण गर्दै सङ्घीय लोकतान्त्रिक गणतन्त्रलाई संस्थागत गर्नुपर्छ । पूर्वाधार तयार हुनु, संरचना विस्तार हुनु र अस्पताल धेरै खुल्नु मात्र पनि विकास होइन । वास्तविक विकास त उत्पादकत्व बढ्नु, जीवनस्तर सुध्रनु, स्वास्थ्य अवस्थामा जोखिम कम हुन गई औसत आयु बढ्नु तथा सामाजिक सद्भाव थप कसिलो हुँदै जानु, आय असमानता कम गर्दै जानु जस्ता परिणामसँग सम्बन्धित छ । तसर्थ विकास निर्माणका क्रियाकलापले जनताको जीवन, आय र सामाजिक सम्बन्धमा के कस्तो फरक ल्याउन सक्यो भनेर हेर्न जरुरी छ । बहुआयामिक गरिबी मापन र मानव विकास प्रतिवेदनहरुले केही हदसम्म यी विषयलाई विश्लेषण गरी उजागर समेत गरेका छन् ।

समग्रमा, सङ्घीय लोकतान्त्रिक गणतन्त्रले समानता, सामाजिक न्याय, समान आर्थिक-सामाजिक पहुँचजस्ता विषयलाई सहज उपभोग गर्न पाउने अवस्थामा पुर्‍याएको छ । लामो र ऐतिहासिक सङ्घर्षको बलमा हासिल गरिएको गणतन्त्रले राजनीतिक तहमा ठूलै उथलपुथल ल्याएको छ। राजनीतिक परिवर्तनले जनताको दैनिक जीवन र राष्ट्रको समृद्धिमा उल्लेख्य प्रभाव पार्नुको साथै परिवर्तनलाई दिगो र गणतन्त्रलाई संस्थागत गर्दै लगेको छ।

गणतन्त्र स्थापनापछि प्रतिनिधित्वमा विविधता देखिए जस्तै नेपालीको समग्र उत्पादन क्षमता, लगानीयोग्य आय र मुलुकको शासकीय क्षमतामा समेत महसुस हुने गरी सुधार आवश्यक छ । सडकको लम्बाई र गुणस्तर, ऊर्जा सुरक्षा, मानवीय सुरक्षा, नागरिकमा देखिएको सचेतना लगायतका हरेक क्षेत्रमा दक्षता एवम् प्रभावकारिता बढ्नु आवश्यक छ । यी विषय हासिल हुनका लागि सुशासन र विकासमा निरन्तर एवम् इमान्दार प्रयत्न आवश्यक छ । जनताको जीवनमा सार्थक र सकारात्मक परिवर्तन ल्याई नेपाललाई सबल र आत्मनिर्भर अर्थतन्त्रसहितको विकसित राष्ट्रका रूपमा अगाडि बढाउनु गणतन्त्रको वास्तविक कार्यभार रहेको छ । संविधानले मौलिक हकका रूपमा व्यवस्था गरेका शिक्षा, स्वास्थ्य, खाद्य सुरक्षा, खानेपानी, सरसफाई, वातावरण संरक्षणलगायतका आधारभूत अधिकारलाई व्यवहारिक रूपमा कार्यान्वयन गर्दै समाजवाद उन्मुख आर्थिक प्रणाली निर्माण गर्न गणतन्त्र सक्षम छ ।

गणतन्त्रका १५ वर्षमा नीति निर्माण तथा प्रशासनिक क्षेत्रमा समावेशी प्रतिनिधित्व बढेको छ। स्थानीय तहमा हालको महिला प्रतिनिधत्वलाई मात्र हेर्ने हो भने साविक स्थानीय निकायमा यस्तो प्रतिनिधित्व ज्यादै कम देखिन्छ । यसैगरी २०४८, २०५१ र २०५६ को संसदमा भएको प्रतिनिधित्वको तुलनामा गणतन्त्रपछिको प्रतिनिधित्व उल्लेख्य रुपमा वृद्धि भएको छ । त्यसैगरी संवैधानिक पदाधिकारीमा महिला पुरुष अनुपात ८:९२ पुगेको छ।

## राजनीतिक प्रतिनिधित्व




**स्थानीय निकाय/तहमा प्रतिनिधित्व (प्रतिशत)**

# प्रतिनिधिसभा/संविधानसभामा प्रतिनिधित्व (प्रतिशत)

| निर्वाचन वर्ष | २०४८ | २०५१ | २०५६ | २०६४ | २०७० | २०७४ | २०७९ |
|---|---|---|---|---|---|---|---|
| महिला | ३.९ | २.९३ | ५.८५ | ३२.७८ | २९.४५ | ३३.०९ | ३३.०९ |
| पुरुष | ९६.१ | ९७.०७ | ९४.१५ | ६७.२२ | ७०.५५ | ६६.९१ | ६६.९१ |



## प्रशासनिक प्रतिनिधित्व

नेपालले प्रशासनिक क्षेत्रमा समावेशी प्रतिनिधित्वमा फड्को मारेको छ । २०६४ देखि २०७९ सम्म लोकसेवा आयोगको समावेशी प्रतिस्पर्धाबाट २२,६९२ जना महिला, आदिवासी जनजाति, मधेशी, दलित, अपाङ्गता भएका व्यक्ति र पिछडिएका क्षेत्र समूहबाट सिफारिश भएका छन् । समावेशी समूहले अवसर सिर्जना गरेकोले यी समूहमा प्रतिस्पर्धी क्षमता पनि बढेको छ । बढेको प्रतिस्पर्धी क्षमताका कारण २०७३/०७४ देखि २०७८/०७९ को अवधिमा खुला प्रतियोगिताबाट ९,०३१ र समावेशी प्रतियोगिताबाट ९,८२९ गरी १८,८६० जना लोकसेवाबाट सरकारी सेवाका लागि सिफारिश भएका छन् ।

## लोकसेवा आयोगबाट सिफारिश



## खुला तथा समावेशी प्रतिस्पर्धा (आ. व. २०७३। ७४-२०७८। ७९)
## बाट सिफारिश भएका समावेशी समूहका उम्मेदवार

| समूह | खुला | समावेशी | जम्मा |
|---|---|---|---|
| महिला | ३७५० | ३३०५ | ७०५५ |
| आदिवासी जनजाति | २०७८ | २४०६ | ४४८४ |
| मधेशी | १८९१ | २०४२ | ३९३३ |
| दलित | ४७० | ७०४ | ११७४ |
| अपाङ्गता | ३०१ | ३८७ | ६८८ |
| पिछडिएको क्षेत्र | ५४१ | ९८५ | १५२६ |

खुला तथा समावेशी प्रतिस्पर्धा (आ. व. २०७३|७४-२०७८|७९) बाट सिफारिश भएका समावेशी समूहका उम्मेदवार



## न्यायिक प्रतिनिधित्व

गणतन्त्रले न्यायिक क्षेत्रमा पनि लैङ्गिक समावेशीकरणलाई टेवा पु-याएको छ । जिल्ला अदालत, उच्च अदालत र सर्वोच्च अदालतको न्यायाधीश पदमा महिलाको संख्या बढ्दो क्रममा छ ।

| अदालत | पुरुष | महिला | कार्यरत | दरवन्दी |
|---|---|---|---|---|
| जिल्ला | २३५ | १६ | २५१ | २८७ |
| उच्च | ९५ | १८ | ११३ | १६० |
| सर्वोच्च | १४ | २ | १६ | २१ |

## राष्ट्रियसभामा महिला सदस्यको प्रतिनिधित्व

| निर्वाचन साल | महिला | | पुरुष | | जम्मा सदस्य संख्या |
|---|---|---|---|---|---|
| | सदस्य संख्या | प्रतिशत | प्रतिशत | सदस्य संख्या | |
| २०७४ | २२ |  | | ३७ | ५९ |
| २०७६ | ७ |  | | १२ | १९ |
| २०७८ | ७ |  | | १३ | २० |

स्रोतः संघीय संसद सचिवालय

## राष्ट्रियसभामा समावेशी प्रतिनिधित्व

### निर्वाचन २०७४



# निर्वाचन २०७६




# निर्वाचन २०७८



# सङ्घीयता कार्यान्वयन

## समायोजन भएका कर्मचारीको संख्या

| प्रदेशको नाम | कूल स्वीकृत दरवन्दी | समायोजन भएका कर्मचारी |
|---|---|---|
| कोशी | ३८८२ | २४१५ |
| मधेश | ३१३३ | १८१२ |
| वागमती | ३९०१ | २५२५ |
| गण्डकी | ३१७८ | १७४८ |
| लुम्बिनी | ४४३६ | २५३२ |
| कर्णाली | २८४८ | १३३४ |
| सुदूरपश्चिम | २६९९ | १४५५ |
| जम्मा | २४,०७७ | १३,८२१ |

स्रोतः सङ्घीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय

## प्रदेशगत रूपमा पारित ऐन

| प्रदेश | प्रदेशगत ऐन |
|---|---|
| कोशी | ६१ |
| मधेश | ५५ |
| वागमती | ७१ |
| गण्डकी | ५९ |
| लुम्बिनी | ७२ |
| कर्णाली | ५४ |
| सुदूरपश्चिम | ६७ |
| जम्मा | ४३० |

स्रोतः सम्बन्धित प्रदेशबाट प्राप्त विवरण

# अनुदान तथा स्रोत बाँडफाँड

## नेपाल सरकारको बजेट विनियोजन

| आर्थिक वर्ष | नेपाल सरकारको कूल विनियोजन बजेट | प्रदेश तथा स्थानीय सरकारमा हस्तान्तरणको लागि विनियोजन रकम (रू.अर्व) | | |
|---|---|---|---|---|
| | | जम्मा | प्रदेश | स्थानीय |
| २०७४/७५ | १२७९ | २३२ | ७ | २२५ |
| २०७९/८० | १७९४ | ४३० | १२९ | ३०० |

स्रोतः अर्थ मन्त्रालय

## प्रदेश सरकारलाई अनुदान हस्तान्तरणका लागि विनियोजित रकम

(रू.लाख)

| आर्थिक बर्ष | वित्तीय समानीकरण अनुदान | | सशर्त अनुदान | | विशेष अनुदान | | समपूरक अनुदान | |
|---|---|---|---|---|---|---|---|---|
| | रकम | प्रतिशत | रकम | प्रतिशत | रकम | प्रतिशत | रकम | प्रतिशत |
| २०७४/७५ | ७१४३५ | १०० | 0 | 0 | 0 | 0 | 0 | 0 |
| २०७९/८० | ६१४३२१ | ४७.५ | ५७१६८२ | ४२.२ | ४५६४३ | ३.५ | ६२९६0 | ४.९ |

स्रोतः अर्थ मन्त्रालय

## स्थानीय तहलाई अनुदान हस्तान्तरणका लागि विनियोजित रकम

(रू.लाख)

| आर्थिक बर्ष | वित्तीय समानीकरण अनुदान | | सशर्त अनुदान | | विशेष अनुदान | | समपूरक अनुदान | |
|---|---|---|---|---|---|---|---|---|
| | रकम | प्रतिशत | रकम | प्रतिशत | रकम | प्रतिशत | रकम | प्रतिशत |
| २०७४/७५ | १४८६३९८ | ६६ | ७६४१४८ | ३४ | 0 | 0 | 0 | 0 |
| २०७९/८० | १००२३१३ | ३३.४ | १८३७२६३ | ६१.२ | ९१४१0 | ३.0 | ७२७३0 | २.४ |

स्रोतः अर्थ मन्त्रालय

# नेपाल सरकारबाट प्रदेश सरकारलाई हस्तान्तरण गरेको वित्तीय समानीकरण अनुदान

(रू.लाख)

| आर्थिक बर्ष | विवरण | प्रदेश | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| | | कोशी प्रदेश | मधेश प्रदेश | बागमती प्रदेश | गण्डकी प्रदेश | लुम्बिनी प्रदेश | कर्णाली प्रदेश | सुदूरपश्चिम प्रदेश | जम्मा |
| २०७४/७५ | वजेट विनियोजन | १०२०५ | १०२०५ | १०२०५ | १०२०५ | १०२०५ | १०२०५ | १०२०५ | ७१४३५ |
| २०७९/८० | वजेट विनियोजन | ८५६७८ | ७३९३४ | ७८५९० | ७४२२८ | ८०२५७ | १०१४२१ | ८५४४० | ५७९५४८ |

स्रोतः अर्थ मन्त्रालय

# नेपाल सरकारबाट स्थानीय तहलाई हस्तान्तरण गरेको वित्तीय समानीकरण अनुदान

| आर्थिक बर्ष | यथार्थ हस्तान्तरण भएको रकम (रू.लाख) | | |
|---|---|---|---|
| | जम्मा | न्यूनतम | अधिकतम |
| २०७५/७६ | ८५२८१९ | ६०० | ६७७२ |
| २०७९/८० | ९४५६९७ | ६८४ | ७५२८ |

स्रोतः अर्थ मन्त्रालय

# सशर्त अनुदान

## नेपाल सरकारबाट प्रदेश सरकारलाई हस्तान्तरण भएको सशर्त अनुदान

| प्रदेश | आ.व. २०७५/७६ | आ.व. २०७८/७९ |
|---|---|---|
| | वजेट विनियोजन | वजेट विनियोजन |
| कोशी प्रदेश | १३२७६७ | ५९६७७ |
| मधेश प्रदेश | ९१८११ | ५५७५२ |
| बागमती प्रदेश | १०६१५६ | ५७३४६ |
| गण्डकी प्रदेश | ६५०१९ | ४१८४३ |
| लुम्बिनी प्रदेश | ९६७०३ | ६२३०३ |
| कर्णाली प्रदेश | ७५६२१ | ३९८७७ |
| सुदूरपश्चिम प्रदेश | ६३२७८ | ४१९३३ |
| जम्मा | ६३१३५५ | ३५८७३१ |

स्रोतः अर्थ मन्त्रालय

# स्थानीय तह

## नेपाल सरकारबाट स्थानीय तहलाई हस्तान्तरण भएको सशर्त अनुदान

| आर्थिक वर्ष | विनियोजित वजेट | | | हस्तान्तरण | | |
|---|---|---|---|---|---|---|
| | जम्मा | न्यूनतम | अधिकतम | जम्मा | न्यूनतम | अधिकतम |
| २०७५/७६ | १०९८४५६ | २३८ | १३०६९ | १२०७१७५ | १९७ | १३०६८ |
| २०७८/७९ | १७३४९८५ | ३९८ | १८९६४ | १९१७११७ | १४३ | १६९०८ |

स्रोतः अर्थ मन्त्रालय

# गणतन्त्र स्थापनापश्चात जारी भएका मुख्य ऐन

- बेपत्ता पारिएका व्यक्तिको छानबिन, सत्यनिरुपण तथा मेलमिलाप आयोग ऐन, २०७१
- गाउँपालिका तथा नगरपालिकाको वडाको संख्या निर्धारण ऐन, २०७३
- स्थानीय तह निर्वाचन ऐन, २०७३
- राष्ट्रपति तथा उपराष्ट्रपतिको निर्वाचन सम्बन्धी ऐन, २०७४
- स्थानीय सरकार सञ्चालन ऐन, २०७४
- प्रदेश सभा सदस्य निर्वाचन ऐन, २०७४
- प्रतिनिधी सभा सदस्य निर्वाचन ऐन, २०७४
- राष्ट्रिय सभा सदस्य निर्वाचन ऐन, २०७५
- रोजगारीको हक सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरणको सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- राष्ट्रिय चिकित्सा शिक्षा ऐन, २०७५
- सुरक्षित मातृत्व तथा प्रजनन स्वास्थ्य सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- संविधान अनुकुल बनाउन केही नेपाल ऐनलाई संशोधन गर्न बनेको ऐन, २०७५
- सामाजिक सुरक्षाको सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- बालबालिका सम्बन्धी ऐन, २०७५
- आवासको अधिकार सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- अपराध पिडित संरक्षण ऐन, २०७५
- अनिवार्य तथा निशूल्क शिक्षा सम्बन्धी ऐन, २०७५
- भू-उपयोगको सम्बन्धमा व्यवस्था गर्नु बनेको ऐन, २०७५
- भुक्तानी फछ्र्यौट सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- जनसङ्ख्या सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- वैयक्तिक सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- प्रशासकिय अदालत ऐन, २०७५
- परमाणविक तथा रेडियोधर्मि पदार्थको सुरक्षित तथा शान्तिपूर्ण प्रयोग सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५
- प्रदेश लोक सेवा आयोग (आधार र मापदण्ड निर्धारण) ऐन, २०७५
- लेखापरीक्षण सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७५

- उपभोक्ता संरक्षण सम्बन्धी कानूनलाई संशोधन र एकिकरण गर्न बनेको ऐन, २०७५
- कर्मचारी समायोजन ऐन, २०७५
- खाद्य तथा खाद्य सम्प्रभुताको अधिकारको सम्बन्धमा व्यवस्था ग़र्न बनेको ऐन, २०७५
- तथ्यांक ऐन, २०७६
- प्रहरी कर्मचारीलाई नेपाल प्रहरी तथा प्रदेश प्रहरीमा समायोजन गर्ने सम्बन्धमा व्यवस्था गर्न बनेको
- ऐन, २०७६
- वातावरण संरक्षण ऐन, २०७६
- सेफगाड्स, एन्टी डम्पिड तथा काउन्टरभेलिङ ऐन, २०७६
- आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन, २०७६
- संघ, प्रदेश र स्थानीय तहबीचको समन्वय तथा अन्तरसम्बन्ध व्यवस्था गर्न बनेको ऐन, २०७७
- शहरी क्षेत्र एकीकृत सार्वजनिक यातायात व्यवस्थापन गर्ने सम्बन्धमा व्यवस्था ग़र्न बनेको ऐन, २०७९






# आर्थिक परिसूचक

| क्र.सं. | सूचक/आर्थिक वर्ष | २०६४/६५ | २०७९/८० |
|---|---|---|---|
| १ | कुल गार्हस्थ उत्पादन(रु अर्व) | ८१५.७ | ५३८१.३ |
| २ | प्रति व्यक्ति जीडिपी (अमेरिकी डलर) | ४९१ | १३९९ |
| **क्र.सं.** | **सूचक/आर्थिक वर्ष** | **२०६४/६५** | **२०७८/७९** |
| ३ | आयात (रु अर्व) | २२१.९४ | १९२०.५ |
| ४ | निर्यात (रु अर्व) | ५९.२७ | २००.० |
| ५ | विप्रेषण आय (रु अर्व) | १४२.७ | १००७.३ |
| ६ | राजस्व (रु अर्व) | १०७.६२ | १०६६.४ |
| ७ | सार्वजनिक ऋण (रु अर्व) | ३६६.० | २०८०.१ |
| ८ | सार्वजनिक खर्च (रु अर्व) | १६१.३५ | १४९०.६ |
| ९ | करदाता संख्या (लाख) | २८७९५८ | ५३४११७८ |
| १० | राजस्व/जीडिपी अनुपात | १३.२ | २१.६ |
| ११ | सार्वजनिक ऋण / जीडिपी अनुपात | ४४.९ | ३८.७ |

स्रोतः आर्थिक सर्भेक्षण

# उद्योग तथा वाणिज्य क्षेत्र

- तुलनात्मक र प्रतिस्पर्धात्मक लाभ भएका वस्तु तथा सेवाको पहिचान गरी निर्यात प्रवर्द्धन तथा आयात व्यवस्थापन गर्न नेपाल व्यापार एकीकृत रणनीति, २०७९ कार्यान्वयनमा आएको । साथै व्यापार घाटा न्यूनीकरणको राष्ट्रिय कार्ययोजना, २०८० कार्यान्वयनमा आएको ।



